

क्वयेर युथ ग्रुप Queer Youth Group

दर्ता नं : २४४९३५/०७७/०७८
स्था.ले.नं : ६०९८२६५८२

सन् २०१८ मा फुक्का संजालको रुपले सुरु भएको सन् २०२० मा मुनाफा वितरण नगर्ने संस्थाका रूपमा दर्ता भएको हामी सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्ति (क्वयेर व्यक्ति)हरूद्वारा नेतृत्व गरिएको र क्वयेर अधिकारमा कार्यरत छौँ।

नेपाल संवत् ११४१ सिल्ला २४, मिति २०७७ ~~पुस~~ माघ २८








श्री शाखा प्रमुखज्यू,
नागरिकता तथा राष्ट्रिय परिचयपत्र व्यवस्थापन शाखा,
गृह मन्त्रालय,
सिंहदरबार, यैँ (काठमाडौँ)।

**विषय : नागरिकता प्रमाणपत्रमा 'लिङ्ग (Sex)' को महललाई 'लैङ्गिकता (Gender)' को महलले प्रतिस्थापन गर्न गराउन आवश्यक काम कारवाही गरिपाउँ।**

महोदय,

उपरोक्त सम्बन्धमा नेपाल नागरिकता प्रमाणपत्रमा लिङ्ग (Sex) को महल उल्लेख रहेको यहाँलाई अवगतै छ। तथापि २०६४ सालमा सर्वोच्च अदालतको नेकाप २०६५, अङ्क ४, नि.नं. ७९५८ पछि क्रमशः नेकाप २०७०, अङ्क १, नि.नं. ८९४५; परमादेश, नेकाप २०७४, अङ्क ९, नि.नं. ९८७५; तथा नेकाप २०७४, अङ्क १२, नि.नं. ९९२१ का फैसलाहरूमा व्यक्तिको लैङ्गिक पहिचान (Gender identity) व्यक्तिको यौनाङ्गले नभएर स्वःअनुभूतीले निर्धारण हुने नजीर प्रतिपादन भएको छ। नेपालको संविधान धारा १२ मा पनि 'लैङ्गिक पहिचान सहितको नागरिकता' भनि उल्लेख गरिएको छ। संयुक्त राष्ट्र संघले पनि Gender identity is a deeply felt and experienced sense of one's own gender भनि परिभाषित गरेका छन्। (United Nations Human Rights Office of High Commissioner - UN Free & Equal) सामाजिक मूल्य मान्यता अनुसार शिश्न (Penis) हुँदा पुरुष हुने र योनी (Vagina) हुँदा महिला हुने भन्ने मान्यता भन्दा बाहेक पनि जन्मँदा बालक इङ्गित गरिएका तर लैङ्गिक पहिचानका हिसाबले महिला हुने वा जन्मँदा बालिका इङ्गित गरिएका तर लैङ्गिक पहिचानका हिसाबले पुरुष हुने पारलैङ्गिक (Transgender) व्यक्ति तथा महिला पुरुष बाहेकका लैङ्गिक पहिचान भएका व्यक्तिहरूलाई समेत सर्वोच्च अदालतका फैसला, नेपालको संविधान तथा अन्तर्राष्ट्रिय मूल्य मान्यताहरूले recognition प्रदान गरिसकेको अवस्था छ। तसर्थ कुनै व्यक्तिको लैङ्गिक पहिचान उसको स्वःअनुभूतीको आधारमा निर्धारण हुने र यौनाङ्गको आधारमा मात्र नहुने तथ्य यहाँहरूलाई जानकारी नै होला।

यौनाङ्ग जेसुकै भएतापनि लैङ्गिक पहिचान महिला, पुरुष वा त्यस बाहेक गैर-द्वयसांखिक (Non-binary) भएको तथ्यलाई समेत स्वीकार गर्दै नेपाल नागरिकता प्रमाणपत्रमा 'लिङ्ग (Sex)' को महल नभई लैङ्गिकता (Gender) को महल हुनुपर्ने अपरिहार्य भएको हुनाले 'लिङ्ग (Sex)' को महललाई 'लैङ्गिकता (Gender)' को महलले प्रतिस्थापन गर्न गराउन आवश्यक काम कारवाही गरिपाउँ भनि यो निवेदन पेश गर्दछौँ।

**बोधार्थ तथा निवेदनार्थ :**
निवेदनको विषयमा बुझी यहाँहरूले पनि मन्त्रालयलाई सिफारिस गर्ने लगायतका आवश्यक कार्यवाही गर्न गराउन निवेदन गर्दछौँ।

- कानून तथा फैसला कार्यान्वयन शाखा, गृह मन्त्रालय, सिंहदरबार, काठमाडौँ।
- राष्ट्रिय मानव अधिकार आयोग, ललितपुर।
- संघीय संसद सचिवालय, सिंहदरबार, काठमाडौँ।
- कानून आयोग, अन्तर्राष्ट्रिय सम्मेलन केन्द्र, नयाँ वानेश्वर, काठमाडौँ।
- कानून, न्याय तथा संसदीय मामिला मन्त्रालय, सिंहदरबार, काठमाडौँ।
- राष्ट्रिय समावेशी आयोग, ललितपुर।
- महिला, बालबालिका तथा समाज कल्याण मन्त्रालय, सिंहदरबार, काठमाडौँ।






रुक्शना
..............
रुक्शना कपाली,
कार्यकारी निर्देशक

ईमेल: queeryouthgroup.nepal@gmail.com
सम्पर्क नं : +९७७-९८०८२६२६९९
ठेगाना : लपुमनपा-१६, ललितपुर, प्रदेश ३
http://fb.com/QYGnepal/
qygnepal QueerYouthGroup